# विदेशी विनिमय (नियमित गर्ने) ऐन, २०१९

प्रमाणीकरण र नेपाल राजपत्रमा
प्रकाशन मिति

**२०१९।३।१५**

**संशोधनः**

| | | |
|---|---|---|
| १. | नेपाल ऐनहरू संशोधन गर्ने, खारेज गर्ने र पुन व्यवस्थित गरी चालू राख्ने ऐन, २०१९ | २०१९।१२।३० |
| २. | न्याय प्रशासन सुधार (चौथो संशोधन) ऐन, २०४३ | २०४३।७।२४ |
| ३. | विदेशी विनिमय (नियमित गर्ने) (पहिलो संशोधन) ऐन, २०४४ | २०४४।७।१ |
| ४. | अर्थ सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०४७ | २०४७।८।२७ |
| ५. | केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०४८ | २०४९।१।८ |
| ६. | विदेशी विनिमय (नियमित गर्ने) (दोस्रो संशोधन) ऐन, २०५८ | २०५९।४।२२ |
| ⇒७. | गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ | २०६६।१०।७ |

**२०१९ सालको ऐन नं. ५**

**विदेशी विनिमयसम्बन्धी बारोबार नियमित गर्न बनेको ऐन**

**प्रस्तावना :** •सर्वसाधारण जनताका आर्थिक हित कायम राख्न विदेशी विनिमय सम्बन्धी कारोवारलाई अझ बढी मात्रामा नियमित गर्न वाञ्छनीय भएकाले,

श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेवबाट •नेपालको सविधानको धारा ९३ अनुसार यो ऐन बनाईबक्सेको छ।



⇒ यो ऐन संवत् २०६५ साल जेठ १५ गतेदेखि लागू भएको, प्रशस्ती र अधिराज्य शब्द झिकिएको।

• नेपाल ऐनहरू संशोधन गर्ने, खारेज गर्ने र पुन व्यवस्थित गरी चालू राख्ने ऐन, २०१९ द्वारा संशोधित।

• नेपाल ऐनहरू संशोधन गर्ने, खारेज गर्ने र पुन व्यवस्थित गरी चालू राख्ने ऐन, २०१९ द्वारा संशोधित।

१. **सक्षिप्त नाम, विस्तार र प्रारम्भ** : (१) यो ऐनको नाम "विदेशी विनिमय (नियमित गर्ने) ऐन, २०१९" रहेको छ ।

♣(२) यो ऐन नेपालभर लागू हुनेछ र नेपाल बाहिर बसोबास गर्ने सबै नेपाली नागरिक तथा नेपालमा दर्ता भई नेपाल बाहिर रहेका फर्म, कम्पनी, संस्था तथा त्यस्ता फर्म, कम्पनी वा संस्थाका शाखा कार्यालय तथा एजेन्सीहरू समेतलाई लागू हुनेछ ।

(३) यो दफा तुरून्त प्रारम्भ हुनेछ र अरू दफाहरू नेपाल सरकारले समयसमयमा नेपाल राजपत्रमा सूचना प्रकाशित गरी तोकिदिएका क्षेत्रमा सोही सूचनामा तोकिएको मितिदेखि प्रारम्भ हुनेछ ।♦

२. **परिभाषा** : विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस ऐनमा,-

≠(क) "मुद्रा" भन्नाले सबै किसिमको करेन्सी नोट, पोस्टल अर्डर, पोस्टल नोट, मनी अर्डर, चेक, ड्राफ्ट, ट्राभलस चेक, प्रतीतपत्र, विनिमयपत्र, प्रतिज्ञापत्र, क्रेडिट कार्ड सम्झनुपर्छ र सो शब्दले बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिएका अन्य यस्तै प्रकारका मौद्रिक उपकरण समेतलाई जनाउँछ ।

⊕(क१) "करेन्सी नोट" भन्नाले नगदको रूपमा चलनचल्तीमा रहेको बैङ्क नोट सम्झनुपर्छ र सो शब्दले सिक्का समेतलाई जनाउँछ ।

≠ (ख) "विदेशी मुद्रा" भन्नाले नेपाली मुद्रा बाहेक अन्य मुद्रा सम्झनुपर्छ र सो शब्दले अन्तर्राष्ट्रिय मुद्रा कोषबाट रकम झिक्न विशेष अधिकार (स्पेशल ड्रइङ्ग राइट्स), एशियन करेन्सी युनिट, युरोपियन करेन्सी युनिट तथा बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिएका अन्य उपकरण समेतलाई जनाउँछ ।



---

♣ पहिलो संशोधनद्वारा संशोधित भई दोस्रो संशोधनद्वारा पुनः संशोधन ।

♦ यो ऐनको अन्तिममा उल्लेख गरिएको छ ।

≠ दोस्रो संशोधनद्वारा संशोधित ।

⊕ दोस्रो संशोधनद्वारा थप ।

≠ दोस्रो संशोधनद्वारा संशोधित ।

≠(ग) "नेपाली मुद्रा" भन्नाले नेपाली रूपैयाँमा अङ्कित मुद्रा सम्झनुपर्छ ।

⊕(ग१) "परिवर्त्य विदेशी मुद्रा" भन्नाले बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी परिवर्त्य विदेशी मुद्रा भनी तोकिदिएका विदेशी मुद्रा सम्झनुपर्छ ।

≠(घ) "विदेशी विनिमय" भन्नाले विदेशी मुद्रा, विदेशी मुद्रामा भुक्तानी हुने वा प्राप्त हुने सबै किसिमको निक्षेप, कर्जा, मौज्दात, विदेशी धितोपत्र र विदेशी मुद्रामा भुक्तानी हुने वा हुन सक्ने अन्तर्राष्ट्रिय प्रचलनमा रहेका चेक, ड्राफ्ट, ट्राभलस चेक, इलेक्ट्रोनिक फण्ड ट्रान्सफर, क्रेडिट कार्ड, प्रतीतपत्र, विनिमयपत्र, प्रतिज्ञापत्र सम्झनुपर्छ र सो शब्दले बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिएको अन्य जुनसुकै मौद्रिक उपकरण समेतलाई जनाउँछ ।

⊕(घ१) "विदेशी विनिमय कारोबार" भन्नाले विदेशी विनिमय खरिद बिक्री गर्ने, ऋण लिने, दिने वा अन्य कुनै तरिकाले विदेशी विनिमय लिने, दिने कार्य सम्झनुपर्छ र सो शब्दले बैङ्कले विदेशी विनिमय सटही स्वीकृति दिने कार्य समेतलाई जनाउँछ ।

⊕(घ२) "इजाजतपत्र" भन्नाले विदेशी विनिमय कारोबार गर्नका लागि कुनै व्यक्ति फर्म, कम्पनी वा संस्थाले दफा ३ बमोजिम बैङ्कबाट प्राप्त गरेको इजाजतपत्र सम्झनुपर्छ ।

≠(ङ) "इजाजतपत्र प्राप्त व्यक्ति" भन्नाले विदेशी विनिमय कारोबार गर्न दफा ३ बमोजिम बैङ्कबाट इजाजतपत्र प्राप्त गरेको व्यक्ति, फर्म, कम्पनी वा संस्था सम्झनुपर्छ ।

≠(च) "धितोपत्र" भन्नाले कुनै सङ्गठित संस्थाले जारी गरेका शेयर, स्टक, बण्ड, डिवेन्चर, डिवेन्चर स्टक वा प्रचलित कानुन बमोजिम संगठित संस्थाले जारी गरेको एकाङ्क

---

≠ दोस्रो संशोधनद्वारा संशोधित ।

⊕ दोस्रो संशोधनद्वारा थप ।

≠ दोस्रो संशोधनद्वारा संशोधित ।

⊕ दोस्रो संशोधनद्वारा थप ।

⊕ दोस्रो संशोधनद्वारा थप ।

≠ दोस्रो संशोधनद्वारा संशोधित ।

बचत कार्यक्रम वा समूहगत बचत कार्यक्रम सम्बन्धी प्रमाणपत्र वा हस्तान्तरण योग्य निक्षेप प्रमाणपत्र सम्झनुपर्छ र सो शब्दले नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकिदिएको धितोपत्र वा धितोपत्रको धरौटी सम्बन्धी भर्पाई, धितोपत्र सम्बन्धी हक र अधिकार समेतलाई जनाउँछ ।

≠(छ) "विदेशी धितोपत्र" भन्नाले नेपाल बाहेक अन्य कुनै मुलुकबाट निष्काशन वा जारी गरिएको धितोपत्र सम्झनुपर्छ ।

⊕(छ१) "विदेशी लगानी" भन्नाले कुनै फर्म, कम्पनी वा संस्थामा विदेशी लगानीकर्ताले गरेको देहाय बमोजिमको लगानी सम्झनुपर्छ :-

(१) शेयरमा गरेको लगानी,

(२) निक्षेपमा गरेको लगानी,

(३) उपखण्ड (१) र (२) बमोजिमको लगानीबाट प्राप्त आयको पुनर्लगानी,

(४) ऋण वा ऋण सुविधाको रूपमा गरेको लगानी ।

⊕(छ२) "प्रविधि हस्तान्तरण" भन्नाले कुनै फर्म, कम्पनी वा संस्था र विदेशी लगानीकर्ताबीच देहायका कुराको सम्बन्धमा सम्झौता गरी गरिने प्रविधिको हस्तान्तरण सम्झनुपर्छ :-

(१) विदेशी उत्पत्तिको कुनै प्रविधि सम्बन्धी अधिकार, विशिष्टता, फर्मुला, प्रक्रिया, पेटण्ट वा प्राविधिक ज्ञानको उपयोग गर्ने,

(२) विदेशी स्वामित्वको ट्रेडमार्क उपयोग गर्ने,

(३) वैदेशिक प्राविधिक सल्लाहकार, व्यवस्थापन तथा बजार सेवा उपलब्ध गर्ने ।



---

≠ दोस्रो संशोधनद्वारा संशोधित ।

≠ दोस्रो संशोधनद्वारा संशोधित ।

⊕ दोस्रो संशोधनद्वारा थप ।

⊕ दोस्रो संशोधनद्वारा थप ।

[⊕](छ३) "विदेशी लगानीकर्ता" भन्नाले विदेशी लगानी वा प्रविधि हस्तान्तरण गर्ने कुनै विदेशी व्यक्ति, फर्म, कम्पनी वा संस्था सम्झनुपर्छ र सो शब्दले विदेशी सरकार वा अन्तर्राष्ट्रिय संस्था समेतलाई जनाउँछ।

[♥](ज) "सुन" भन्नाले कानुनी रूपले प्रचलनमा भएको वा नभएको सिक्काको रूपमा रहेको सुन, शुद्धीकरण भएको वा नभएको सुनका ढिक्काहरू र पाताहरू तथा पूर्णतया वा मुख्यतया सुनबाट बनेका गहना र मालवस्तुहरूलाई समेत जनाउँछ।

[♥](झ) "चाँदी" भन्नाले कानुनी रूपले प्रचलनमा भएको वा नभएको सिक्काको रूपमा रहेको चाँदी र शुद्धीकरण भएको वा नभएको चाँदीका ढिक्काहरू र पाताहरू तथा पूर्णतया वा मुख्यतया चाँदीबाट बनेका गहना र माल वस्तुहरूलाई समेत जनाउँछ।

(ञ) "बैङ्क" भन्नाले नेपाल राष्ट्र बैङ्क सम्झनुपर्छ।

(ट) "तोकिएको" वा "तोकिए बमोजिमको" भन्नाले यो ऐन अन्तर्गत बनेको नियममा तोकिएको वा तोकिए बमोजिमको सम्झनुपर्छ।

(ठ) "कुनै धितोपत्रको सम्बन्धमा धनी" भन्नाले सो धितोपत्र बेचबिखन वा नामसारी गर्न पाउने हक भएको व्यक्ति वा सो धितोपत्र आफ्नो नाउँमा राख्ने व्यक्ति वा सो आफ्नै वा अरू व्यक्तिको तर्फबाट सो धितोपत्रको लाभांश वा व्याज प्राप्त गर्ने व्यक्ति वा सो धितोपत्रमा कुनै हक भएको व्यक्तिलाई समेत जनाउँछ र सो धितोपत्र कुनै ट्रष्टमा राखिएको वा त्यसको लाभांश वा व्याज कुनै ट्रष्ट फण्डमा जम्मा हुने रहेछ भने सो ट्रष्ट वा त्यसको कुनै शर्तलाई अरू कुनै व्यक्तिको मञ्जुरी लिई वा नलिई सञ्चालन गराउन वा खारेज गर्न वा हेरफेर गर्न पाउने हक भएको वा ट्रष्ट मनीको लगानीलाई नियन्त्रण गर्न पाउने हक भएको व्यक्तिलाई जनाउँछ।

[©](ड) "अनुसन्धान अधिकारी" भन्नाले दफा ११क. बमोजिम तोकिएको अनुसन्धान अधिकारी सम्झनुपर्छ।

---

⊕ दोस्रो संशोधनद्वारा थप।

♥ पहिलो संशोधनद्वारा संशोधित।

♥ पहिलो संशोधनद्वारा संशोधित।

© पहिलो संशोधनद्वारा थप।

©(ढ) "नेपालमा बसोबास गर्ने व्यक्ति" भन्नाले देहायका कुनै व्यक्ति सम्झनुपर्छ :-

१. नोकरी, व्यापार वा अन्य कुनै व्यवसाय गरी वा अरू कुनै कामले ≠बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिएको भन्दाबढी अवधिको लागि नेपाल बाहिर बसोबास गरिरहेका नेपाली नागरिक बाहेक अरू नेपाली नागरिक,

२. नोकरी, व्यापार वा अन्य कुनै व्यवसाय गरी ≠बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिएको भन्दाबढी अवधिको लागि नेपालमा बसोबास गरिरहेका गैर नेपाली नागरिक।

©(ण) "नेपाल बाहिर बसोबास गर्ने व्यक्ति" भन्नाले नेपालमा बसोबास गर्ने व्यक्ति बाहेकका अन्य व्यक्ति सम्झनुपर्छ।

≠३. **विदेशी विनिमय कारोबार गर्न इजाजतपत्र लिनुपर्ने** : (१) विदेशी विनिमय कारोबार गर्न चाहने व्यक्ति, फर्म, कम्पनी वा संस्थाले बैङ्कबाट इजाजतपत्र लिनुपर्नेछ।

(२) विदेशी विनिमय कारोबार गर्न चाहने व्यक्ति, फर्म, कम्पनी वा संस्थाले इजाजतपत्र लिनको लागि बैङ्कले तोकिदिएको विवरण सहित बैङ्क समक्ष दरखास्त दिनुपर्नेछ।

(३) उपदफा (२) बमोजिम दरखास्त पर्न आएमा निर्धारित मापदण्डको आधारमा बैङ्कले आवश्यक जाँचबुझ गरी उपयुक्त देखेमा सम्बन्धित व्यक्ति, फर्म, कम्पनी वा संस्थालाई विदेशी विनिमयको कारोबार गर्न इजाजतपत्र दिन सक्नेछ। यसरी बैङ्कले इजाजतपत्र दिँदा कारोबार गर्ने विदेशी विनिमयको किसिम, हद, कारोबार गर्न पाउने अवधि र अन्य आवश्यक शर्तहरू समेत तोकिदिन सक्नेछ।

© पहिलो संशोधनद्वारा थप।
≠ दोस्रो संशोधनद्वारा संशोधित।
≠ दोस्रो संशोधनद्वारा संशोधित।
© पहिलो संशोधनद्वारा थप।
≠ दोस्रो संशोधनद्वारा संशोधित।

(४) विदेशी विनिमय कारोबार नियमित तथा व्यवस्थित गर्ने सम्बन्धमा इजाजतपत्र प्राप्त व्यक्तिलाई बैङ्कले समयसमयमा आवश्यक आदेश वा निर्देशन दिन सक्नेछ । यस्तो आदेश वा निर्देशनको पालना गर्नु इजाजतपत्र प्राप्त व्यक्तिको कर्तव्य हुनेछ ।

(५) इजाजतपत्र प्राप्त गर्ने बैङ्कले तोकिदिएबमोजिम वार्षिक शुल्क र धरौटी बैङ्कमा बुझाउनु पर्नेछ । यसरी तोकिएको वार्षिक शुल्क वा धरौटी नबुझाउने इजाजतपत्र प्राप्त व्यक्तिको इजाजतपत्र बैङ्कले रद्द वा निलम्बन गर्न सक्नेछ ।

(६) कुनै व्यक्ति, फर्म, कम्पनी वा संस्थाले विदेशी विनिमय कारोबार गर्न पटके इजाजतपत्र माग गर्न आएमा बैङ्कले यसै दफाको अधीनमा रही त्यस्तो व्यक्तिलाई पटके इजाजतपत्र दिन सक्नेछ ।

⊕**३क. <u>बैङ्कले कारबाही गर्न सक्ने</u>** : (१) इजाजतपत्र प्राप्त व्यक्तिले बैङ्कले यस ऐन बमोजिम दिएको आदेश वा निर्देशनको पालना नगरेमा बैङ्कले त्यस्तो इजाजतपत्र प्राप्त व्यक्तिलाई देहायको कुनै वा सबै कारबाही गर्न सक्नेछ :-

(क) नसिहत दिन,

(ख) विदेशी विनिमयको कुनै वा सबै कारोबारमा प्रतिबन्ध लगाउन,

(ग) बैङ्कमा रहेको नगद धरौटी जफत गर्न वा जमानतबाट असुल गर्न,

(घ) इजाजतपत्र निलम्बन वा रद्द गर्न ।

(२) उपदफा (१) बमोजिम बैङ्कले इजाजतपत्र प्राप्त व्यक्तिलाई कारावही गर्दा निजलाई आफ्नो पक्षमा सफाइ पेश गर्ने उचित अवसर प्रदान गर्नुपर्नेछ ।

⊕**३ख. <u>विदेशी विनिमय कारोबार सम्बन्धी अन्य व्यवस्था</u>** : विदेशी विनिमय कारोबारको सम्बन्धमा यस ऐनमा व्यवस्था भएको बाहेक अन्य व्यवस्था बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिए बमोजिम हुनेछ ।

⊕ दोस्रो संशोधनद्वारा थप ।
⊕ दोस्रो संशोधनद्वारा थप ।

♥४. ≠**विदेशी विनिमय कारोबार गर्ने प्रक्रिया** : ≠(१) कसैले पनि बैङ्कको स्वीकृति नलिई इजाजतपत्र प्राप्त व्यक्तिसँग बाहेक अरू व्यक्तिसँग विदेशी विनिमय कारोबार गर्न हुँदैन ।

(२) इजाजतपत्र प्राप्त व्यक्ति वा अरू जुनसुकै व्यक्तिले बैङ्कले तोकिदिएको सटही दरमा फरक पारी नेपाली मुद्रा दिई विदेशी मुद्रा लिन र विदेशी मुद्रा दिई नेपाली मुद्रा लिने गरी विदेशी विनिमयको कारोबार गर्न हुँदैन ।

(३) कुनै व्यक्तिले कुनै खास उद्देश्यको लागि वा कुनै शर्तमा विदेशी विनिमय प्राप्त गरेको भए सो व्यक्तिले त्यस्तो विदेशी विनिमय अन्य काममा लगाउन वा उक्त शर्त उल्लङ्घन गर्नु हुँदैन । त्यसरी प्राप्त गरेको विदेशी विनिमय सम्बन्धित काममा लगाउन नसकिने भएमा वा सो शर्त पूरा गर्न नसकिने भएमा निजले आफूलाई सो कुराको जानकारी भएको मितिले तीस दिनभित्र इजाजतपत्र प्राप्त व्यक्ति वा बैङ्कलाई त्यस्तो विदेशी विनिमय बैङ्कद्वारा निर्धारित दरमा विक्री गर्नुपर्नेछ ।

(४) कुनै व्यक्तिले नेपालभित्र कुनै वस्तु आयात गर्नको लागि विदेशी विनिमय प्राप्त गरेकोमा निजले मनासिव माफिकको अवधिभित्र त्यस्तो वस्तु आयात नगरेमा वा त्यसरी प्राप्त गरेको विदेशी विनिमयको मूल्य बराबरको वस्तु आयात नगरेमा निजले त्यसरी प्राप्त गरेको विदेशी विनिमय सो काममा लगाउन नसकेको वा सो शर्त पूरा गर्न नसकेको मानिनेछ ।

♣४क. **नेपाली नागरिकले प्राप्त गरेको विदेशी विनिमय सम्बन्धी व्यवस्था** : (१) नेपाली नागरिकले प्राप्त गरेको विदेशी विनिमयका सम्बन्धमा बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिएबमोजिम हुनेछ ।

(२) नेपाली नागरिकले विदेशमा रहँदा बस्दाको अवधिसम्म आर्जन गरेको विदेशी विनिमय वा सो विदेशी विनिमयबाट गरेको लगानी नेपाल फर्किसेकपछि पनि दफा ६ मा उल्लिखित अवस्थामा बाहेक त्यस्तो विदेशी विनिमय विदेशमै राख्न वा सोको लगानी

---

♥ पहिलो संशोधनद्वारा संशोधित ।

≠ दोस्रो संशोधनद्वारा संशोधित ।

≠ दोस्रो संशोधनद्वारा संशोधित ।

♣ पहिलो संशोधनद्वारा थप भई दोस्रो संशोधनद्वारा संशोधन ।

विदेशमा नै गर्न चाहेमा सो कुराको जानकारी बैङ्कलाई दिई त्यस्तो विदेशी विनिमय विदेशमा राख्न वा सोको लगानी विदेशमा गर्न सक्नेछ ।

⊕४ख. **विदेशीलाई वस्तु बिक्री वा सेवा प्रदान गरे बापतको भुक्तानी** : नेपालमा रहेका व्यक्ति, फर्म, कम्पनी वा संस्थाले कुनै विदेशी व्यक्ति, फर्म, कम्पनी वा संस्थालाई कुनै वस्तु विक्री वा सेवा प्रदान गरे बापतको भुक्तानी लिँदा बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी अन्यथा व्यवस्था गरेकोमा बाहेक परिवर्त्य विदेशी मुद्रामा लिनु पर्नेछ ।

≠५. **केही मुद्रा र बुलियन निकासी वा पैठारी गर्नमा प्रतिबन्ध** : (१) कुनै व्यक्ति, फर्म, कम्पनी वा संस्थाले बैङ्कबाट इजाजतपत्र नलिई कुनै खास किसिमको नेपाली मुद्रा वा विदेशी मुद्रा नेपालको सबै वा कुनै खास इलाकाभित्र ल्याउन वा पठाउन नपाउने गरी नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी आदेश जारी गर्न सक्नेछ । त्यस्तो आदेश जारी गर्दा नेपाल सरकारले कुनै व्यक्ति, फर्म, कम्पनी वा संस्थाका सम्बन्धमा वा कुनै खास किसिमको नेपाली मुद्रा वा विदेशी मुद्राका सम्बन्धमा त्यस्तो प्रतिबन्ध नलाग्ने गरी त्यस्तो आदेशमा तोकिदिन सक्नेछ ।

(२) कुनै व्यक्ति, फर्म कम्पनी वा संस्थाले बैङ्कबाट इजाजतपत्र नलिई नेपाली मुद्रा वा इजाजतपत्र प्राप्त व्यक्तिबाट प्राप्त गरेको बाहेक अरू विदेशी विनिमय नेपालको कुनै इलाकाबाट बाहिर लिएर जान वा पठाउन हुँदैन । क

तर नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी कुनै विदेशी विनिमयको सम्बन्धमा त्यस्तो प्रतिबन्ध नलाग्ने गरी आदेश जारी गर्न सक्नेछ ।

६. **विदेशी विनिमय प्राप्त गर्न नेपाल सरकारको अधिकार** : (१) ≠नेपाल सरकारले मुलुकमा आर्थिक तथा मौद्रिक सङ्कट पर्न गई विदेशी विनिमयको सङ्कट पर्न गएको अवस्थामा नेपाल राजपत्रमा सूचना प्रकाशन गरी विदेशी विनिमयको धनी नेपाली नागरिकलाई आफ्नो स्वामित्वमा रहेको विदेशी विनिमय देहाय बमोजिम गर्न आदेश दिन सक्नेछ :-

⊕ दोस्रो संशोधनद्वारा थप ।

≠ दोस्रो संशोधनद्वारा संशोधित ।

≠ दोस्रो संशोधनद्वारा संशोधित ।

(क) सो सूचनामा तोकिएको विदेशी विनिमय हुने व्यक्तिले नेपाल सरकारको नाममा बैङ्कमा वा सो कामको निमित्त बैङ्कले अधिकार दिएको व्यक्तिकहाँ बैङ्कबाट निर्धारित भएको दरमा बिक्रीको लागि दाखिल गर्न वा गराउन ।

(ख) सो सूचनामा तोकिएको विदेशी विनिमय पाउने हक अरूलाई प्रदान गर्ने अधिकार भएको व्यक्तिले नेपाल सरकारको नाममा बैङ्कबाट निर्धारित दरले हुन आएको मूल्य लिई त्यस्तो अधिकार नामसारी गरिदिन ।

तर नेपाल सरकारले सोही सूचनाद्वारा वा अर्को आदेश जारी गरी कुनै खास व्यक्ति वा खास वर्गका व्यक्तिहरूका सम्बन्धमा उक्त आदेश लागू नहुने गर्न सक्नेछ ।

(२) कुनै व्यक्तिले इजाजतपत्र प्राप्त व्यक्तिबाट प्राप्त गरी बैङ्कको अनुमति लिई कुनै कामको निमित्त राखेको विदेशी विनिमयको सम्बन्धमा यो दफा लागू हुने छैन ।

७. **विदेशी विनिमय प्राप्त गर्न सक्ने भएका व्यक्तिहरूको कर्तव्य** : (१) नेपाल बाहिरबाट विदेशी विनिमय प्राप्त गर्ने वा ♥नेपाली मुद्रामा भुक्तानी पाउने हक भएको कुनै व्यक्तिले बैङ्कको ............अनुमति नलिई त्यस्तो विदेशी विनिमय वा ♥नेपाली मुद्रा सबै वा केही अंशमा भुक्तानी पाउन ढिलाई हुने वा भुक्तानी नहुने गर्न कुनै काम गर्न हुँदैन ।

(२) कुनै व्यक्तिले उपदफा (१) उल्लङ्घन गरेमा विदेशी विनिमय प्राप्त गर्न वा ♥नेपाली मुद्राको भुक्तानी गराउन बैङ्कले त्यस्तो व्यक्तिलाई आवश्यक देखेको निर्देशन दिन सक्नेछ ।

≠ ८. **पैठारीकर्ताको दायित्व** : (१) विदेशी विनिमयमा भुक्तानी हुने गरी कुनै पनि व्यक्ति फर्म, कम्पनी वा संस्थाले नेपालभित्र प्रतीतपत्र खोली वा अन्य कुनै प्रकारले कुनै मालसामान पैठारी

---

♥ पहिलो संशोधनद्वारा संशोधित ।

♥ पहिलो संशोधनद्वारा संशोधित ।

♥ पहिलो संशोधनद्वारा संशोधित ।

गर्दा बैङ्कले तोकिदिएको समयभित्र त्यस्तो मालसामानको पैठारी गरी बैङ्कले तोकिदिए बमोजिमको कागजात बैङ्क समक्ष पेश गर्नुपर्नेछ ।

(२) पैठारीको लागि भुक्तानी गर्ने विदेशी विनिमयको प्रकार र प्रक्रिया सम्बन्धी व्यवस्था बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रशारण गरी तोकिदिए बमोजिम हुनेछ ।

(३) बैङ्कको पूर्व स्वीकृति लिएको अवस्थामा बाहेक पैठारीकर्ताले प्रतीतपत्रमा घोषणा गरेको मालसामान सोही प्रतीतपत्रमा उल्लेख गरेको मूल्य र परिमाण बमोजिम नै पैठारी गर्नुपर्नेछ ।

तर प्रतीतपत्रमा संशोधन गरिएको अवस्थामा संशोधित मूल्य र परिमाण बमोजिमको मालसामान पैठारी गर्न बाधा पर्नेछैन ।

(४) कुनै पैठारीकर्ताले वाणिज्य बैङ्कमा पैठारीको लागि प्रतीतपत्र खोल्दा अर्को कुनै व्यक्ति,फर्म, कम्पनी वा संस्था जमानी बसेको वा सोसम्बन्धी कार्यमा प्रत्यक्ष वा अप्रत्यक्ष रूपले संलग्न भएको अवस्थामा उक्त कारोबारमा कुनै प्रकारले विदेशी मुद्राको हिनामिना वा अपचलन भएमा प्रचलित कानुनमा जुनसुकै कुरा लेखिएको भए तापनि विदेशी मुद्रा हिनामिना वा अपचलन गरे वापत जमानी बस्ने वा सोसम्बन्धी कार्यमा प्रत्यक्ष वा अप्रत्यक्ष रूपले संलग्न हुने व्यक्ति, फर्म, कम्पनी वा संस्था उपर समेत यस ऐन बमोजिम सजाय हुनेछ ।

(५) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि ज्ञान तथा सूचनामूलक प्रविधिको पैठारी र सोको भुक्तानी गर्ने प्रक्रिया बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिए बमोजिम हुनेछ ।

(६) पैठारीकर्ताले सही वीजकीकरण गर्नुपर्नेछ । सो नहुने र नगर्ने जस्ता काम र सोसँग सम्बन्धित कुनै पनि काम गर्नु हुँदैन ।

९. **निकासी गरिएको मालसामानको मूल्य भुक्तानी** : (१) नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी नेपाल बाहिरका कुनै ठाउँमा सो सूचनामा खुलाए बमोजिमका मालसामानहरू उपदफा (२) अन्तर्गत गरिएको व्यवस्था बमोजिम बाहेक निकासी निषेध गर्न सक्नेछ ।

---

≠ दोस्रो संशोधनद्वारा संशोधित ।

(२) यस दफाको प्रयोजनको लागि नेपाल सरकारले बैङ्कसँग परामर्श गरी आवश्यक नियम बनाउन वा निर्देश वा आदेश जारी गर्न सक्नेछ ।

©९क. **निकासी भएको मालसामानको मूल्य भुक्तानी प्राप्त गर्ने बारे** : (१) निकासीकर्ताले बैङ्कले तोकको निकासी प्रज्ञापनपत्रमा उल्लेखित विवरणहरू भरी उक्त प्रज्ञापनपत्रमा घोषित मूल्य बैङ्कद्वारा स्वीकृत विदेशी विनिमयमा तोकिएको अवधिभित्र भुक्तानी ल्याउँछु भनी भन्सार अधिकृतसमक्ष घोषणा गर्नुपर्नेछ ।

(२) निकासी गरिएको मालसामानको भुक्तानी प्राप्त गर्नु अघि प्रज्ञापनपत्रमा घोषित मूल्य भन्दा कम वा बढी मूल्य भुक्तानी हुने अवस्था परेमा निकासीकर्ताले सो कुराको प्रमाण सहित बैङ्क समक्ष आवेदन गर्नुपर्नेछ र उक्त कुरा पुष्टि भएमा बैङ्कले त्यस्तो कम वा बढी भुक्तानी प्राप्त गर्ने स्वीकृति दिन सक्नेछ ।

(३) उपदफा (१) अन्तर्गत तोकिएको अवधिभित्र निकासीकर्ताले निकासी गरिएको मालसामानको मूल्य भुक्तानी प्राप्त नगरेमा निजले यस ऐनको उल्लङ्घन गरेको मानिनेछ ।

(४) उपदफा (३) मा जुनसुकै कुरा लेखिएको भए तापनि निकासीकर्ताले उपदफा (१) अन्तर्गत तोकिएको अवधिभित्र निकासी गरिएको मालसामानको मूल्य भुक्तानी प्राप्त गर्न नसक्नाको मनासिव कारण खोली प्रमाण सहित बैङ्कमा निवेदन दिएमा र बैङ्क सो कुरामा विश्वस्त भएमा बैङ्कले सम्बन्धित निकासीकर्तालाई पुनः अवधी तोकी देहाएको आदेश दिन सक्नेछ :-

(क) मालसामान विक्री भैसकेको भए त्यसको भुक्तानी ल्याउन,

(ख) मालसामान विक्री भैनसकेको भए सो विक्री गरी भुक्तानी ल्याउन वा त्यस्तो मालसामान नेपालमै फिर्ता ल्याउन ।

⊕तर निकासीकर्ताले आफ्नो काबू बाहिरको परिस्थिति परी निकासी भएको मालसामानको भुक्तानी ल्याउन नसक्नाको मनासिव कारण खोली प्रमाण सहित बैङ्कमा निवेदन दिएमा बैङ्कले आवश्यक

© पहिलो संशोधनद्वारा थप ।

⊕ दोस्रो संशोधनद्वारा थप ।

छानविन गरी त्यस्तो मालसामान फिर्ता गर्न वा आंशिक वा पूरै भुक्तानी ल्याउन नपर्ने गरी छुट दिन सक्नेछ ।

(५) प्रज्ञापनपत्रमा घोषित मूल्य तोकिएको अवधीभित्र तोकिएको तरीकाले भुक्तानी हुने व्यहोरा बैङ्कले प्रमाणित गराउन चाहेमा निकासीकर्ताबाट निजले विदेशी क्रेतासँग गरेको यस सम्बन्धी सम्झौतापत्र तथा अन्य प्रमाण पेश गर्न लगाउन सक्नेछ ।

(६) निकासी गरिएको मालसामानको पूरा मूल्य भुक्तानी प्राप्त हुने व्यवस्था गर्न बैङ्कले निकासी हुने सबै वा कुनै खास किसिमको मालसामान वा सबै वा कुनै खास निर्यातकर्ताको सम्बन्धमा देहाय बमोजिम गर्नुपर्ने गरी आदेश जारी गर्न सक्नेछ :-

(क) नेपाल सरकारले अन्यथा तोकेको अवस्थामा बाहेक निकासी गरिएका मालसामानहरूको भुक्तानी प्रतीतपत्रको माध्यमबाट वा बैङ्कले तोकेको अन्य माध्यमबाट मात्र प्राप्त गर्नुपर्ने,

(ख) उपदफा (१) बमोजिम प्रज्ञापनपत्रमा घोषित मूल्य नै निर्यातको वास्तविक मूल्य हो भनी प्रमाणित गराउन उक्त प्रज्ञापनपत्र बैङ्कले तोकेको अधिकारी वा संस्थामा पेश गर्नुपर्ने,

⊕(७) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि ज्ञान तथा सूचनामूलक प्रविधिको निकासी र सोको भुक्तानी प्राप्त गर्ने प्रक्रिया बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिए बमोजिम हुनेछ ।

©**९ख. निकासीकर्ताले गर्न नहुने काम** : निकासीकर्ताले देहायको कुनै काम गर्नु हुँदैन :-

(क) तोकिएको तरीका बाहेक अरू तरीकाबाट निकासी भएको मालसामानको भुक्तानी प्राप्त गर्ने,

(ख) तोकिएको अवधिभन्दा ढिलाई हुने गरी निकासी भएको मालसामानको भुक्तानी लिने व्यवस्था गर्ने,

(ग) निकासी भएको मालसामानको पूरा मूल्यको भुक्तानी प्राप्त नगर्ने कुनै काम गर्ने,

⊕ दोस्रो संशोधनद्वारा थप ।
© पहिलो संशोधनद्वारा थप ।

[⊕](घ) सही वीजकीकरण नहुने काम वा त्यस्तो कामसँग सम्बन्धित अन्य कुनै काम गर्ने ।

[©]९ग. **भुक्तानी दिन वा प्राप्त गर्नमा प्रतिबन्ध** : [≠]बैङ्कले तोकिदिएको व्यवस्था बमोजिम बाहेक नेपालमा बसोबास गर्ने कुनै पनि व्यक्तिले प्रत्यक्ष वा अप्रत्यक्ष रूपले देहायको कुनै काम गर्नु गराउनु हुँदैनः-

(क) नेपाल बाहिर बसोबास गर्ने कुनै व्यक्तिलाई कुनै तरीकाले कुनै किसिमको भुक्तानी दिन,

(ख) नेपाल बाहिर बसोबास गर्ने कुनै व्यक्तिको पक्षमा भुक्तानी पाउने अधिकार सिर्जना हुने वा हस्तान्तरण हुने गरी कुनै विनिमयपत्र वा प्रतिज्ञापत्र खिच्न, स्वीकार गर्न वा नेगोसियट गर्न वा कुनै ऋण स्वीकार गर्न,

(ग) नेपाल बाहिर बसोबास गर्ने कुनै व्यक्तिको आदेशले वा निजको तर्फबाट कुनै व्यक्तिलाई कुनै किसिमको भुक्तानी दिन ।

१०. **धितोपत्रहरूको निकासी र नामसारीमा नियन्त्रण**: [≠]बैङ्कले तोकिदिएको व्यवस्था बमोजिम बाहेक कुनै व्यक्तिले देहायको कुनै कार्य गर्नु हुँदैनः-

(क) नेपाल बाहिरको कुनै स्थानमा कुनै धितोपत्र निकासी गर्न,

(ख) नेपाल बाहिर बसोबास गर्ने कुनै व्यक्तिको नाममा कुनै धितोपत्र नामसारी गर्न,

(ग) कुनै धितोपत्र आर्जन गर्न भनी वा भोग गर्न भनी वा नियन्त्रणमा राख्न भनी वा कुनै प्रकारले नेपालबाहिर बसोबास गर्ने व्यक्तिलाई दिन ।

**स्पष्टीकरण**: कुनै धितोपत्रको सम्बन्धमा “नामसारी” भन्नाले ऋण वा धितोपत्रको रूपमा गरिएको नामसारीलाई समेत जनाउँछ ।

---

⊕ दोस्रो संशोधनद्वारा थप ।
© पहिलो संशोधनद्वारा थप ।
≠ दोस्रो संशोधनद्वारा संशोधित ।
≠ दोस्रो संशोधनद्वारा संशोधित ।

⊕१०क. **लगानी गर्नमा प्रतिबन्ध** : (१) प्रचलित कानुन बमोजिम कुनै व्यक्तिले विदेशमा लगानी गर्दा वा विदेशी लगानीकर्ताले नेपालमा लगानी गर्दा बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिएबमोजिम गर्नुपर्नेछ।

तर नेपालमा बसोबास गर्ने कुनै नेपाली नागरिकले विदेशमा रहँदा बस्दाको अवधिसम्म आफ्नो आर्जनबाट विदेशमा गरेको लगानीलाई यस दफाले वाधा पुऱ्याएको मानिने छैन।

⊕१०ख. **विदेशी विनिमयमा ऋण लिनेदिने व्यवस्था** : प्रचलित कानुनले व्यवस्था गरेको र बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिएको व्यवस्था बमोजिम बाहेक कसैले पनि विदेशी विनिमयमा ऋण लिन दिन हुँदैन।

⊕१०ग. **विदेशी विनिमय फिर्ता लैजाने, लगानी गर्ने र हक हस्तान्तरण गर्ने व्यवस्था** : (१) प्रचलित कानुन बमोजिम धितोपत्रमा लगानी गर्न स्वीकृति पाएका विदेशी लगानीकर्ताले बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिएको प्रक्रियाबमोजिम देहाय बमोजिमको रकम विदेशी मुद्रामा नेपाल बाहिर लैजान वा पठाउन पाउने छन् :-

(क) धितोपत्रमा गरेको लगानी र सो बापत प्राप्त लाभ वा लाभांश,

(ख) ऋण वा ऋण सुविधाको रूपमा गरेको लगानी र सोको ब्याज।

(२) नेपाल बाहिर बसोबास गर्ने नेपाली नागरिकले नेपालभित्र विदेशी विनिमयमा लगानी गर्न स्वीकृति पाएमा उपदफा (१) बमोजिम सुविधा दिइनेछ।

(३) उपदफा (१) को खण्ड (क) मा उल्लिखित धितोपत्रमध्ये सूचीकरण भएको धितोपत्रको हकमा धितोपत्र विनिमय बजारमा कारोबार भए बमोजिमको मूल्यले हुने रकम र सूचीकरण नभएको धितोपत्रको हकमा बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिएको प्रक्रियाबमोजिम निर्धारण गरिएको सम्बन्धित संस्थाको सम्पत्तिको आधारमा विदेशी विनिमयमा लैजान वा पठाउन पाइनेछ।

---

⊕ दोस्रो संशोधनद्वारा थप।
⊕ दोस्रो संशोधनद्वारा थप।
⊕ दोस्रो संशोधनद्वारा थप।

(४) प्रचलित कानुन बमोजिम तिर्नुपर्ने कर वा शुल्क विदेशी मुद्रामा भुक्तानी गरेमा कुनै विदेशी व्यक्ति, फर्म, कम्पनी वा संस्थाले प्राप्त गरेको धितोपत्र कुनै अर्को विदेशी व्यक्ति, फर्म, कम्पनी वा संस्थालाई प्रचलित कानुनको रीत पुऱ्याई हक हस्तान्तरण गर्न सक्नेछ।

(५) प्रचलित कानुन बमोजिम विदेशी लगानीकर्ताले गरेको प्रविधि हस्तान्तरण सम्झौतामा उल्लेख भएबमोजिम प्राविधिक शुल्क, रोयल्टी आदि बापतको रकम विदेशमा लैजान वा पठाउन पाउनेछ।

(६) नेपालमा कार्यरत इजाजपत्र प्राप्त विदेशी वायु सेवा, निजका एजेण्ट वा त्यस्तो कार्य गर्न अधिकृत गरिएका नेपाली व्यक्ति, फर्म, कम्पनी वा संस्थाले नेपालमा बिक्री गरेका हवाई टिकट तथा कार्गो बापतको रिप्याट्रिएशन लैजाने वा पठाउने प्रक्रियाको सम्बन्धमा बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिएबमोजिम हुनेछ।

(७) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि नेपाली मुद्रामा लगानी गरी विदेशी मुद्रा आर्जन नगर्ने व्यक्ति, फर्म, कम्पनी वा संस्थाले यस दफा बमोजिम विदेशी मुद्रामा भुक्तानी लिन दिन पाउने छन्।

११. **विवरण माग्न सक्ने** : (१) ∝.........

(२) यस ऐनको उद्देश्य पूरा गर्नको लागि नेपाल सरकार वा बैङ्कलाई कुनै विवरण, खाता वा लिखत प्राप्त गर्न वा जाँच्न आवश्यक वा वाञ्छनीय छ भन्ने लागेमा र यस किसिमको विवरण, खाता वा लिखत यस व्यक्तिसँग छ वा यस व्यक्तिले प्राप्त गरी पेश गर्न सक्ने सम्भव छ भन्ने लागेमा नेपाल सरकार वा बैङ्कले कुनै त्यस्तो व्यक्तिलाई सो विवरण खाता वा लिखत नेपाल सरकार वा बैङ्कमा पेश गर्न वा प्राप्त गरी पेश गर्ने आदेश दिन सक्नेछ।

(३) ∝...........

©११क. **अनुसन्धान अधिकारी तोक्ने** : नेपाल सरकारले यस ऐन अन्तर्गतका कसूर सम्बन्धमा जाँचबुझ र अनुसन्धान गर्नका लागि अनुसन्धान अधिकारी तोक्न सक्नेछ।

---

∝ दोस्रो संशोधनद्वारा झिकिएको।
∝ दोस्रो संशोधनद्वारा झिकिएको।

©**११ख. शङ्का लागेको व्यक्तिको खानतलासी लिने** : (१) यस ऐन विपरीत कुनै व्यक्तिसँग कुनै विदेशी विनिमय छ भनी शङ्का गर्नुपर्ने पर्याप्त कारण र आधार भएमा अनुसन्धान अधिकारीको आदेशले कम्तीमा राजपत्रअनङ्कित द्वितीय श्रेणीको कर्मचारीबाट त्यस्तो व्यक्तिको जिउको खानतलासी लिन सकिनेछ ।

तर कुनै स्वास्नीमानिसको खानतलासी लिँदा स्वास्नीमानिसद्वारा मात्र खानतलासी लिन लगाउनु पर्नेछ ।

(२) शङ्का लागेको व्यक्तिको खानतलासी लिँदा यस ऐन विपरीत कुनै विदेशी विनिमय वा सोसँग सम्बन्धित कुनै लिखत फेला परेमा त्यस्तो विदेशी विनिमय वा लिखत कब्जामा लिन सकिनेछ ।

(३) यस दफा बमोजिम खानतलासी लिँदा कम्तीमा दुईजना स्थानीय व्यक्तिहरू साक्षी राखी निजहरूको उपस्थितिमा खानतलासी लिनुपर्नेछ । खानतलासी लिँदा फेला परेका विदेशी विनिमय वा सोसँग सम्बन्धित लिखतको विवरण तयार गरी त्यसमा उपस्थित साक्षीहरूको समेत सहीछाप गराउनु पर्नेछ ।

©**११ग. सवारी रोक्ने र खानतलासी लिने** : (१) यस ऐन विपरीत कार्य गर्न कुनै सवारीको साधन प्रयोग गरिएको छ वा प्रयोग गर्न लागिएको छ वा यस ऐन विपरीत हुने गरी कुनै विदेशी विनिमय त्यसमा लुकाएको छ भन्ने शङ्का गर्नुपर्ने पर्याप्त कारण र आधार भएमा अनुसन्धान अधिकारीको आदेशले जुनसुकै बेला वा ठाउँमा त्यस्तो सवारीलाई रोक्न सकिनेछ ।

(२) उपदफा (१) बमोजिम रोकिएका सवारीको कुनै पनि भाग र त्यसमा रहेको मालसामानहरूको खानतलासी लिन वा जाँचबुझ गर्न सकिनेछ र त्यसरी खानतलासी लिंदा यस ऐन विपरीतको कुनै विदेशी विनिमय वा सोसँग सम्बन्धित कुनै लिखत फेला परेमा सो कब्जामा लिन सकिनेछ ।



---

© पहिलो संशोधनद्वारा थप ।

© पहिलो संशोधनद्वारा थप ।

© पहिलो संशोधनद्वारा थप ।

©११घ. **घर वा कारोवारको ठाउँको खानतलासी लिने** : (१) यस ऐन विपरीत कुनै विदेशी विनिमय कुनै घर वा कारोवारको ठाउँमा लुकाएको वा राखिएको छ भनी विश्वास गर्नुपर्ने पर्याप्त कारण र आधार भएमा अनुसन्धान अधिकारीले सो कुराको पर्चा खडा गरी उक्त घर वा कारोवारको ठाउँको खानतलासी लिन आदेश दिन सक्नेछ।

(२) उपदफा (१) बमोजिमको आदेशअनुसार खानतलासी लिंदा कम्तीमा राजपत्र अनङ्कित द्वितीय श्रेणीको कर्मचारीले गर्नुपर्नेछ।

(३) अनुसन्धान अधिकारीको आदेशअनुसार खानतलासी लिन खटिएको कर्मचारीले खानतलासी लिनुपर्ने घर वा कारोवारको ठाउँमा तत्काल बसोबास गरिरहेका व्यक्तिलाई खानतलासी लिनुपरेको कारण समेत खोली सूचना दिनुपर्नेछ। सम्बन्धित व्यक्तिले त्यस्तो सूचना नबुझेमा सो सूचनाको एक प्रति खानतलासी लिनुपर्ने घर वा कारोवारको ठाउँको सबैले देख्ने स्थानमा टाँसी दिनुपर्नेछ । सूचना टाँस भएपछि सम्बन्धित व्यक्तिले खानतलासीको सूचना पाएको मानिनेछ।

(४) उपदफा (३) बमोजिम सम्बन्धित व्यक्तिलाई सूचना दिएपछि खानतलासी लिन खटिएका कर्मचारीलाई घर वा कारोवारको ठाउँमा खानतलासी लिन दिनुपर्नेछ।

(५) खानतलासी लिन जाँदा सम्बन्धित व्यक्तिले बाधा बिरोध गरेमा खानतलासी लिन खटिएका कर्मचारीलाई खानतलासी लिनुपर्ने घर वा कारोवारको ठाउँमा बसिरहेको व्यक्तिहरूलाई हट्न सूचना र मौका दिनुपर्नेछ। यसरी हट्ने मौका दिँदादिँदै पनि नहटेमा आवश्यक बलसमेत प्रयोग गरी खानतलासी लिनुपर्ने घर वा कारोवारको ठाउँको बाहिरी वा भित्री ढोका, झ्याल वा छेस्किनी खोली वा फोरी कुनै पनि समयमा खानतलासी लिन सकिनेछ।

(६) खानतलासी लिँदा यस ऐन विपरीत कुनै विदेशी विनिमय वा त्यसैसँग सम्बन्धित लिखत फेला परेमा त्यस्तो विदेशी विनिमय वा लिखत कब्जामा लिन सकिनेछ।

(७) यस दफा बमोजिम खानतलासी लिँदा €गाउँ विकास समिति वा नगरपालिका सदस्य वा कम्तीमा दुईजना स्थानीय भलाद्मीहरू साक्षी राखी निजहरूको उपस्थितिमा

© पहिलो संशोधनद्वारा थप।

€ अर्थ सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०४७ द्वारा संशोधित।

खानतलासी लिनुपर्नेछ । खानतलासी लिंदा फेलापरेको यस ऐन विपरित कुनै विदेशी विनिमय वा त्यससँग सम्बन्धित लिखतको विवरण तयार गरी त्यसमा उपस्थित साक्षीहरूको समेत सहीछाप गराउनु पर्नेछ ।

©११ङ **पक्राउ गर्ने** : (१) कुनै व्यक्तिले यस ऐन वर्खिलाप कुनै काम गरेको छ वा गर्न लागेको छ भनी शङ्का गर्नुपर्ने पर्याप्त कारण र आधार भएमा अनुसन्धान अधिकारीको आदेशले त्यस्तो व्यक्तिलाई जुनसुकै ठाउँमा पक्राउ गर्न सकिनेछ ।

(२) उपदफा (१) बमोजिम पक्राउ परेको व्यक्तिलाई बाटोको म्याद बाहेक चौबीस घण्टाभित्र मुद्दा हेर्न अधिकारी समक्ष पेश गनुपर्नेछ ।

©११च. **हिरासतमा राख्ने** : यस ऐन अन्तर्गत पक्राउ परेको व्यक्तिलाई जाँचबुझ र अनुसन्धान गर्ने सिलसिलामा मुद्दा हेर्ने अधिकारीको स्वीकृति लिई एक पटकमा ७ (सात) दिनमा नबढाई बढीमा तीस दिनसम्म हिरासतमा राख्न सकिनेछ ।

©११छ. **गोप्यता भङ्ग गर्न नहुने** : अनुसन्धान अधिकारी वा निज मातहतका कर्मचारीले यस ऐन अर्न्तगत काम कारवाही गर्दा आफ्नो ओहदाको हैसियतले ज्ञात हुन आएको कुनै कुरा वा दाखिल भएका लिखतको गोप्यता प्रचलित कानुनले बाध्य गरेको अवस्थामा बाहेक अन्य अवस्थामा भङ्ग गर्नु हुँदैन ।

तर त्यस्तो कुरा वा लिखत अन्य मुद्दा मामिलाको निमित्त आवश्यक वा प्रमाण लाग्ने किसिमको छ भन्ने कुरा मुद्दा हेर्ने अधिकारीलाई लागेमा निजको आदेशबाट कानुनद्वारा अधिकृत व्यक्तिको समक्ष त्यस्तो कुरा वा त्यस्तो लिखितको गोप्यता सम्बन्धी कुरा व्यक्त गरेमा गोप्यता भङ्ग गरेको मानिने छैन ।

©११ज.**कब्जा गरिएको विदेशी विनिमय तथा लिखत सुरक्षित राख्नुपर्ने** : अनुसन्धान अधिकारीले यस ऐन बमोजिम कब्जा गरिएको विदेशी विनिमय तथा सोसँग सम्बन्धित लिखत सुरक्षित राख्नु पर्नेछ ।

© पहिलो संशोधनद्वारा थप ।
© पहिलो संशोधनद्वारा थप ।
© पहिलो संशोधनद्वारा थप ।
© पहिलो संशोधनद्वारा थप ।

©११भ.**कब्जा गरेको निस्सा दिनुपर्ने** : यस ऐन बमोजिम कुनै विदेशी विनिमय वा सोसँग सम्बन्धित लिखत कब्जा गर्दा त्यसरी कब्जा गरिएको विदेशी विनिमय तथा सोसँग सम्बन्धित लिखतको विवरण खोली त्यसको निस्सा सम्बन्धित व्यक्तिलाई तत्काल दिनुपर्नेछ ।

©११ञ. **प्रतिवेदन पेश गर्ने** : यस ऐन बमोजिम अनुसन्धान अधिकारीले आफूले गरेको काम कारवाहीको प्रतिवदन नेपाल सरकार समक्ष प्रत्येक महिनामा पेश गर्नुपर्नेछ ।

१२. **निर्देश दिने, विनियम बनाउने वा आदेश वा सूचना जारी गर्ने बैङ्कको अधिकार** : दफा १५ अन्तर्गत नेपाल सरकारले दिएको कुनै निर्देशमा बाधा बिरोध नपर्ने गरी बैङ्कले यो ऐनमा लेखिएका कुराहरू कार्यान्वित गर्नका लागि आवश्यकतानुसार समय समयमा निर्देशहरू दिन वा विनियम बनाउन वा आदेश वा सूचना जारी गर्न सक्नेछ ।

१३. **यो ऐनको उद्देश्य विपरीत हुने गरी ठेक्कापट्टा गर्न नहुने** : यो ऐनमा लेखिएको कुनै कुरा वा यो ऐन अर्न्तगत बनाइएको नियम, विनियम, दिएको निर्देश वा जारी गरिएको आदेश वा सूचनासँग मेल नखाने गरी कुनै व्यक्तिले कुनै किसिमको ठेक्का पट्टा, वा लिखत गर्न गराउन हुँदैन ।

≠१४. **निरीक्षण** : (१) नेपाल सरकार वा बैङ्कले जुनसुकै समयमा कुनै इजाजतपत्र प्राप्त व्यक्तिको खाता, हिसाव किताब र अरू लिखतहरू निरीक्षण गर्न गराउन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम निरीक्षण गर्न खटी आएका कर्मचारीले दिएको म्यादभित्र निजले मागेबमोजिमको विदेशी विनिमयको सटही कारोबारसम्बन्धी आफ्नो जिम्मा वा नियन्त्रणमा रहेको सबै खाता, हिसाब किताब र लिखतहरू निज समक्ष दाखिला गर्नु र निजले मागेबमोजिमको त्यस्तो सटही कारोबार सम्बन्धी विवरण वा जानकारी दिनु प्रत्येक इजाजतपत्र प्राप्त व्यक्तिको कर्तव्य हुनेछ । इजाजतपत्र प्राप्त व्यक्ति कुनै फर्म, कम्पनी वा संस्था रहेछ भने त्यस्तो खाता, हिसाब किताब, लिखत, विवरण वा जानकारी सो कम्पनीको सञ्चालक वा सम्बन्धित पदाधिकारी वा सो कामसँग सम्बन्धित हिस्सेदार वा सम्बन्धित पदाधिकारीले दाखिला गर्नु वा दिनुपर्नेछ ।

---

© पहिलो संशोधनद्वारा थप ।

© पहिलो संशोधनद्वारा थप ।

≠ दोस्रो संशोधनद्वारा संशोधित ।

(३) उपदफा (१) बमोजिम निरीक्षण गर्न खटिएका कर्मचारीले कुनै इजाजतपत्र प्राप्त व्यक्ति वा निजको एजेण्टलाई वा इजाजतपत्र प्राप्त व्यक्ति, फर्म, कम्पनी वा संस्था रहेछ भने त्यसको सञ्चालक वा सम्बन्धित पदाधिकारीलाई लिखित वा मौखिक सोधपुछ गर्न सक्नेछ ।

(४) उपदफा (२) बमोजिम दाखिला गर्नुपर्ने खाता, हिसाब किताब, लिखत वा दिनुपर्ने कुनै विवरण वा जानकारी कुनै व्यक्ति, फर्म, कम्पनी वा संस्थाको सञ्चालक वा पदाधिकारीले दाखिला नगरेमा वा नदिएमा वा निरीक्षण गर्न खटिएका कर्मचारीले माग गरेको कुनै प्रश्नको उत्तर नदिएमा यो ऐनको उल्लङ्घन गरेको मानिनेछ ।

(५) उपदफा (१) बमोजिम निरीक्षण गर्न खटिएका कर्मचारीले निरीक्षण गर्दा यस ऐन विपरीत कुनै विदेशी विनिमय वा सोसँग सम्बन्धित लिखत, हिसाब किताब, खाता वा विवरण फेला पारेमा त्यस्तो विदेशी विनिमय वा सोसँग सम्बन्धित लिखत, हिसाबकिताब, खाता वा विवरण आफ्नो कब्जामा लिन वा कुनै सेफ वा कोठामा बन्द गरी सिलछाप लगाउन सक्नेछ ।

(६) उपदफा (५) बमोजिम निरीक्षण गर्न खटिएका कर्मचारीले त्यस्तो विदेशी विनियम वा लिखत आफ्नो कब्जामा लिंदा वा सिलछाप लगाउँदा सम्बन्धित इजाजतपत्र प्राप्त व्यक्ति वा कम्तीमा दुईजना अन्य व्यक्तिहरू साक्षी राखी कब्जामा लिएको कुराहरूको विवरण तयार पारी साक्षीहरूको समेत सहिछाप गराउनु पर्नेछ ।

**१५.** **नेपाल सरकारको निर्देश दिने अधिकार** : यस ऐनको प्रयोजनको लागि आवश्यक सम्झेमा नेपाल सरकारले बैङ्कलाई समय समयमा सामान्य वा विशेष निर्देश दिन सक्नेछ र बैङ्कले यस ऐन अन्तर्गतको कामकुरा गर्नको लागि त्यस्तो कुनै निर्देशको पालन गर्नुपर्नेछ ।

**♥१६.** **खाता खोल्दा बैङ्कको स्वीकृति लिनुपर्ने** : (१) नेपालमा बसोबास गर्ने कुनै पनि नेपाली नागरिक वा नेपालमा दर्ता भएको कुनै कम्पनी, संगठित संस्था वा फर्मले विदेशस्थित बैङ्कमा खाता खोल्दा बैङ्कको स्वीकृति लिनुपर्नेछ ।

(२) उपदफा (१) बमोजिम खाता खोल्ने स्वीकृति दिँदा बैङ्कले आवश्यक विवरणहरू माग गर्न तथा शर्तहरू समेत तोक्न सक्नेछ ।

---

♥ पहिलो संशोधनद्वारा संशोधित ।

[⊕](३) उपदफा (१) बमोजिम खुलेका खाताको सञ्चालन तथा उपयोग बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिएबमोजिम हुनेछ ।

[⊕](४) नेपालमा बसोबास गर्ने कुनै पनि नेपाली नागरिक वा नेपालमा दर्ता भएका कुनै पनि फर्म, कम्पनी वा संस्थाले नेपालभित्र विदेशी मुद्रामा खाता खोल्न, सञ्चालन गर्न र सोको उपयोगको सम्बन्धमा बैङ्कले सार्वजनिक सूचना प्रकाशन र प्रसारण गरी तोकिदिएबमोजिम हुनेछ ।

≠**१७** <u>**दण्ड सजाय**</u> : (१) यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियम वा सो अन्तर्गत जारी भएको आदेश वा निर्देशन वा परिपत्र वा सूचना वा बैङ्कले तोकिदिएको कुनै प्रक्रिया विपरीत कुनै व्यक्तिले कुनै काम गरेमा सो काम गरे बापत भएको कसूरसँग सम्बन्धित विदेशी विनिमय जफत गरी त्यस्तो व्यक्तिलाई बिगोबमोजिमको जरिवानादेखि बिगोको तीन गुणासम्म थप जरिवाना हुनेछ ।

तर त्यस्तो कसूरसँग सम्बन्धित विदेशी विनिमय जफत गर्न नमिल्ने अवस्थाको कसूरहरूको सम्बन्धमा सो कसूरसँग सम्बन्धित विदेशी विनिमयको बिगो कायम गरी त्यसरी कायम हुन आएको बिगो बमोजिमको जरिवानादेखि बिगोको तीन गुणासम्म थप जरिवाना हुनेछ ।

(२) उपदफा (१) बमोजिम बिगो कायम गर्दा बिगोको रकम खुल्न वा खुलाउन नसकिने अवस्था आईपरेमा कसूरका मात्रा हेरी दुई लाख रूपैयाँसम्म जरिवाना हुनेछ ।

(३) यस ऐन बमोजिमका काम कुराहरू गर्न, निरीक्षण गर्न तथा अनुसन्धानका निमित्त खटिएका कर्मचारीहरूले बदनियतपूर्ण कार्य गरी ऐनको उल्लङ्घन हुने कुनै कार्य गरेमा वा गोप्यता भङ्ग गरेमा त्यस्तो कार्य गर्ने कर्मचारीलाई कसूरको मात्रा हेरी एक लाख रूपैयाँसम्म जरिवाना हुनेछ ।

---

⊕ दोस्रो संशोधनद्वारा थप ।

⊕ दोस्रो संशोधनद्वारा थप ।

≠ दोस्रो संशोधनद्वारा संशोधित ।

(४) यस ऐन बमोजिम सजाय हुने कसूर कुनै फर्म, कम्पनी, संस्थाबाट भएकोमा सो कसूर हुँदाको बखत सो फर्म, कम्पनी, संस्थाको सो कसूरसँग सम्बन्धित कामको जिम्मा लिने सञ्चालक, पदाधिकारी, कर्मचारी वा एजेण्ट सजायको भागी हुनेछ।

तर कसूर भएको कुरा त्यस्तो सञ्चालक, पदाधिकारी, कर्मचारी वा एजेण्टलाई जानकारी हुन सक्ने अवस्था नभएको वा त्यस्तो कसूर रोक्ने निजहरूले यथासम्भव प्रयास गरेको हो भन्ने कुराको प्रमाण पेश गर्न सकेमा निजहरूले यस उपदफा बमोजिम सजायको जवाफदेही बहन गर्नुपर्ने छैन।

(५) दफा ८ बमोजिम पठैारीको सम्बन्धमा गर्नुपर्ने काम कुराहरू नगरी वा पुऱ्याउनु पर्ने प्रक्रियाहरू नपुऱ्याई वा अधिवीजकीकरण गरी पैठारी गरेको वा निर्धारित अवधिभित्र मालसामान पैठारी नगरेको वा पैठारी गर्नुपर्ने मालसामान पैठारी नगरेको पैठारीकर्तालाई सम्बन्धित पैठारीको बिगो कायम गरी त्यसरी कायम हुन आएको बिगो बमोजिमको जरिवानादेखि बिगोको तीन गुणासम्म थप जरिवाना हुनेछ।

(६) दफा ९क., ९ख. र ९ग. को विपरीत कसूर गर्ने निकासीकर्तालाई निकासी गरेको मालसामानको बिगो बमोजिमको जरिवानादेखि बिगोको दुई गुणासम्म थप जरिवाना हुनेछ।

(७) उपदफा (५) र (६) बमोजिमको कसूर गर्न मतियार हुने वा मद्दत पुऱ्याउने व्यक्तिलाई उपदफाहरूमा उल्लिखित सजायको आधा सजाय हुनेछ।

(८) यस दफा बमोजिम भएको जरिवानाको रकम भुक्तानी नगरेमा त्यस्तो व्यक्तिलाई जरिवानाको मात्रा अनुसार चार वर्षसम्म कैदको सजाय हुन सक्नेछ।

(९) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि विदेशी विनिमयसँग सम्बन्धित कसूरको विगो रकम एक करोड रूपैयाँ वा सोभन्दा बढी भएमा त्यस्तो व्यक्तिलाई हुने अन्य सजायको अतिरिक्त तीन वर्षसम्मको कैद सजाय समेत थप हुनेछ।

(१०) अनुसन्धानको सिलसिलामा अनुसन्धान अधिकारीले पक्राउ गरेको व्यक्तिलाई र मुद्दाको सिलसिलामा सम्बन्धित अदालतले आरोपित व्यक्तिसँग कसूरको बिगो रकम एक लाख रूपैयाँसम्म भएका कसूरहरूको हकमा हाजिर जमानीमा र कसूरको बिगो रकम एक लाख रूपैयाँभन्दा बढी भएका कसूरहरूको हकमा कसूरको बिगो बमोजिम धरौटी लिई वा कसूरको

मात्रा बमोजिम कायम गरिएको बिगो बमोजिमको धरौटी लिई तारेखमा राखी कारबाही चलाउन सक्नेछ।

(११) कुनै पनि संवैधानिक निकायको प्रमुख वा सदस्य वा राजनीतिक नियुक्तिको पदमा बहाल रहेको कुनै व्यक्तिले यस ऐन बमोजिम कसूर हुने कुनै काम गरेमा त्यस्तो काम गर्ने अन्य व्यक्तिलाई हुने सजायको दोब्बर सजाय हुनेछ।

तर कैद सजायको हकमा थप दुई वर्षभन्दा बढी सजाय हुनेछैन।

(१२) उपदफा (१) बमोजिम धरौटी दाखिला नगर्ने व्यक्तिलाई थुनामा राखी कारबाही चलाउनु पर्नेछ।

∇**१८. जाँचबुझ गर्ने र मुद्दा चलाउने** : कुनै व्यक्तिले यो ऐन उल्लङ्घन गेरको छ वा यस ऐन अन्तर्गतको नियम, विनियम, आदेश, सूचना वा निर्देशको विपरीत कुनै काम गरेको छ भन्ने कुराको मौखिक वा लिखित सूचना नेपाल सरकारबाट वा बैङ्कबाट अधिकृत व्यक्तिबाट पाएमा सरकारी वकील वा नेपाल सरकारबाट यस सम्बन्धमा अधिकार प्राप्त अधिकारीले सो कुराको जाँचबुझ गर्नेछ र जाँचबुझ गर्दा कुनै व्यक्तिले त्यस्तो उल्लङ्घन वा विपरीत काम गरेको छ भन्ने ठहराएमा निज विरूद्ध मुद्दा चलाउनेछ।

©**१८क. मुद्दा दायर गर्ने** : (१) यस ऐन अन्तर्गतको कसूर सम्बन्धी मुद्दा अनुसन्धान अधिकारीले नेपाल सरकारको नामबाट दायर गर्नेछ।

(२) उपदफा (१) बमोजिम मुद्दा दायर गर्दा अनुसन्धान अधिकारीले सरकारी वकीलको राय लिनुपर्नेछ।

♣**१८ख. विदेशी विनिमयसँग सम्बन्धित कागजातको प्रतिलिपि प्रमाणित गराउने** : (१) यस ऐन बमोजिमको कसूरको सिलसिलामा कब्जामा लिइएको विदेशी विनिमय वा सोसँग सम्बन्धित विवरणलाई अनुसन्धान अधिकारीले प्रतिलिपि वा फोटोकपी बनाई प्रमाणित गराई राख्नुपर्नेछ।



∇ केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०४८ द्वारा संशोधित ।

© पहिलो संशोधनद्वारा थप।

♣ पहिलो संशोधनद्वारा थप भई दोस्रो संशोधनद्वारा संशोधन।

(२) प्रचलित कानुनमा जुनसुकै कुरा लेखिएको भए तापनि उपदफा (१) बमोजिम प्रमाणित गराई राखेको विदेशी विनिमय वा सोसगँ सम्बन्धित विवरणको प्रतिलिपि वा फोटोकपीलाई यस ऐन बमोजिमको कसूर सम्बन्धी मुद्दामा प्रमाण स्वरूप पेश गर्न सकिनेछ।

१९. **लिखत बदर हुने** : दफा १३ उल्लङ्घन गरी कुनै किसिमको ठेक्कापट्टा वा लिखत गरिएको रहेछ भने यो ऐन अन्तर्गत मुद्दा हेर्ने अदालतको आदेशले त्यस्तो ठेक्कापट्टा वा लिखत बदर वातिल हुन सक्नेछ।

♥२०. **खबर गरेमा इनाम दिने** : (१) यो ऐन वा यस ऐन अन्तर्गत बनेका नियम, विनियम, आदेश, सूचना, निर्देश, इजाजत वा इजाजतपत्रको विपरीत विदेशी विनिमय सम्बन्धी अपराध गरेको कुराको सुराक कुनै व्यक्तिले नेपाल सरकार वा नेपाल सरकारबाट अधिकार प्राप्त अधिकारी समक्ष दिइ त्यसरी दिएको सुराकको आधारमा विदेशी विनिमय पक्राउ भई अपराध प्रमाणित हुन आएमा त्यसरी पक्राउ भई आएको विदेशी मुद्रालाई नेपाली मुद्रामा परिणत गर्दा कायम हुन आएको बिगोको सयकडा बीस प्रतिशत त्यस्तो सुराक दिने व्यक्तिलाई इनाम दिइनेछ।

(२) उपदफा (१) बमोजिम दिइने इनामको रकम मुद्दाको अन्तिम टुङ्गो लागेपछि पक्राउ भएको विदेशी मुद्रालाई नेपाली मुद्रामा परिणत गरी हुन आउने रकमबाट दिइनेछ।

२१. **दावी वा उजुरी नलाग्ने** : (१) यो ऐन वा यस ऐन अन्तर्गतको कुनै नियम, विनियम, आदेश वा सूचना वा निर्देश बमोजिम असल नियतले कुनै व्यक्तिले काम गरे बापत वा गर्ने अभिप्राय गरे बापत निज उपर कुनै अदालतमा कुनै किसिमको मुद्दा उजुरी वा कानुनी कारवाई चलाईने छैन।

(२) कुनै व्यक्तिलाई नेपाल सरकारले वा बैङ्कले वा इजाजतपत्र प्राप्त व्यक्तिले ( जानीजानी वा लापरवाही गरेमा बाहेक) विदेशी विनिमय प्राप्त नगराई दिएका कारणले हानी नोक्सानी पर्न गएमा कुनै किसिमको दाबी लाग्ने छैन।

२२. **नियमहरू बनाउने अधिकार** : यस ऐनको उद्देश्य कार्यान्वित गर्नको लागि नेपाल सरकारले बैङ्कसँग परामर्श गरी नियमहरू बनाउन सक्नेछ।

२३. **खारेजी** : विदेशी विनिमय सटही नियन्त्रण ऐन, २०१७ खारेज गरिएको छ।

---

♥ पहिलो संशोधनद्वारा संशोधित।

२४. **<u>हाल भैरहेका इजाजतपत्रहरू</u>** : बैङ्कले अन्यथा आदेश नदिएसम्म विदेशी विनिमय सटही नियन्त्रण ऐन, २०१७ अन्तर्गत दिइएको इजाजतपत्रहरू अगावै खारेज गरिएकोमा बाहेक सोही इजाजतपत्रमा तोकिएको अवधिको लागि सोही इजाजतपत्रमा तोकिएको शर्तमा या ऐनको दफा ३ अन्तर्गत दिइएको मानिनेछ ।

२५. ® ................................

---

® नेपाल ऐनहरू संशोधन गर्ने, खारेज गर्ने र पुनः व्यस्थित गरी चालू राख्ने ऐन, २०१९ द्वारा झिकिएको ।

<u>विदेशी विनिमय (नियमित) गर्ने ऐन, २०१९ का बाँकी दफाहरू प्रारम्भ भएका स्थान र मिति :-</u>

(क) काठमाडौ, भद्रपुर, विराटनगर, राजविराज, हनुमाननगर, जनकपुर, मलंगवा, गौर, कलैया, वीरगञ्ज, बुटबल, भैरहवा, परासी, पक्लीहवा, कृष्णनगर, शिवराज, नेपालगञ्ज, धनगढी, पोखरा, तानसेन, पाल्पा र धरान क्षेत्रहरूमा २०२०।५।१ देखि प्रारम्भ । (नेपाल राजपत्र मिति २०२०।४।२२)

(ख) जलेश्वर, तौलिहवा र सिराहा क्षेत्रहरूमा २०२०।११।१ देखि प्रारम्भ । (नेपाल राजपत्र मिति २०२०।१०।२७)

(ग) हेटौडा, बनेपा, धनकुटा, त्रिशुली र बागलुङ क्षेत्रहरूमा २०२१।५।१ देखि प्रारम्भ भएको । (नेपाल राजपत्र मिति २०२१।४।२७)

(घ) इलाम, कोइलावास, कञ्चनपुर (महेन्द्रनगर) गुलरिया, भोजपुर, घोराही र सर्लाही क्षेत्रहरूमा २०२१।२।१ देखि प्रारम्भ । (नेपाल राजपत्र मिति २०२१।२।१)

(ङ) डोटी जिल्लामा २०२२।७।१ देखि प्रारम्भ भएको । (नेपाल राजपत्र मिति २०२२।६।११)

(च) बैतडी जिल्लामा २०२२।११।१ देखि प्रारम्भ भएको । (नेपाल राजपत्र मिति २०२२।९।२६)

(छ) बागमती अञ्चल, नारायणी अञ्चल, जनकपुर अञ्चल, सगरमाथा अञ्चल, कोशी अञ्चल र मेची अञ्चलमा २०२३।६।१ देखि प्रारम्भ भएको । (नेपाल राजपत्र मिति २०२३।५।३१)

(ज) गण्डकी अञ्चल, कर्णाली अञ्चल, धवलागिरी अञ्चल, भेरी अञ्चल, लुम्बिनी अञ्चल, सेती अञ्चल, राप्ती अञ्चल र महाकाली अञ्चलमा २०२३।७।१ देखि प्रारम्भ भएको । (नेपाल राजपत्र मिति २०२३।७।१)

**<u>द्रष्टव्य</u>** : (१) विदेशी विनिमय (नियमित गर्ने) (दोस्रो संशोधन) ऐन, २०५८ द्वारा रूपान्तर गरिएको शब्दः- "सेक्युरिटी" को सट्टा "धितोपत्र"

(२) केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६३ द्वारा रूपान्तर गरिएको शब्द :-

"श्री ५ को सरकार" को सट्टा "नेपाल सरकार" ।